श्री

# सत्य-हरिश्चन्द्र कथा

(१)

जस्का भुजा विच छ खड्ग र पद्म कची।
खप्पर् छ शोभित अती, कद विघ्न छोटी।।
जस्को त नाउँ पनि भन्छन उग्र तारा।
गर्छू प्रणाम गर आपति नाश सारा।।

(२)

अत्यन्त घोर रुप वर्ण छ मेघ जस्तो।
वाघाम्बरु छ कटिमा पनि वस्त्र जस्को।।
नाच्ने पिएर मदिरा लिइ खप्परुमा।
तत्पर् सधैं भगत लाइ सुखै दिनामा।।

(३)

यस्तो जगज्जननि तारिणि लाई पैल्हे।
गर्छु प्रणाम सब विघ्न हटोस ऐल्है।।
सम्पूर्ण विघ्न गणराज अगाड़ि आई।
राखी दया म कन सर्व दिउन् हटाई।।

(४)

प्रतापी हरिश्चन्द्र जी को चरित्र।
सुनाऊ ऋषि यो कथा जो विचित्र।।
अती सत्यवादी ति राजा रहेछन्।
रिसाई ऋषीले कती दुख दिएछन्।।

(५)

कती आपत्ति- तिन्महाँ पर्न आए।
पछी अन्त्यमा के गरी स्वर्ग पाए।।
सुनी प्रश्न यस्ता खुशी मानि मन्मा।
बताऊन लागे सबै बात तिन्मा।।

(६)

त्रिशंकू भनि नाम इक्ष्वाकु कुल्मा।
थिए सत्यवादी र धार्मिष्ठ सब्मा।।
हरिश्चन्द्र छोरा तिनीकै भएका।
पिताकै सरि धर्ममा मन् दिएका।।

(७)

थिए धन्य राजा! अती सत्य वादी।
सबै रैति हेरु थिए बिघ्न राजी।।
न पैल्हे थिए यी सरी धर्मि कोही।
न होलान् पछी जानिल्यौ बात येही।।

(८)

सुन्यौं सत्यका इँ ठुलो यो जगत्मा।
अरु छैन केही बुझील्यौ मनैमा।।
सहज् स्वर्ग लाने धरम् सब बखत्मा।
गईने हरिश्चन्द्रका इँ सहज्मा।।

(९)

हे राजन्! मुनिल्लेउ सत्य महिमा विस्तार गर्छु यहाँ।
सत्यैले गरि कीर्ति अन्त्य रहने जानीलिनू सब् तहाँ।।
धर्मै पूर्वक राज्य पालन सधैं गर्थे ति राजा अनि।
सन्तान् क्वै नहुँदासँधै ति रहने अत्यन्त दिक्दार् पनी।।

(१०)

एक्दिन् सामुभयेर रानि नृपकी यो बिन्ति गर्छिन् तहाँ।
दुःखीछौं महाराज हामि वहुतै संतान् नहूँदा महाँ।।
सोध्नूहोस् गुरुका गएर सँगमा कुन् कर्मले यो घरी।
छोरो जन्मन जान्छ पूर्वजुनिको सम्पूर्ण बाधा टरी।।

(११)

सन्तान्देखि रहित् भएर रहँदा भन्छन् अपुत्री भनी।
मर्दामा पनि पिण्डपानि नमिल्ली छुट्नेछ स्वर्गै पनि।।
यस्तै धेर विलाप् गरेर दुखि भै रोइन् ति रानी अनि।
संझाईकन रानिलाइ सब बात् ऊठे ति राजा पनि।।

(१२)

पौंची आश्रममा वशिष्ठमुनिका सङ्मा सुध्याये तहाँ।
हे सर्वज्ञ गुरो!क्सोगरि हुनन् छोरा मलाई यहाँ।।
राजाको सुनि विन्ति फेरि मुनिले भन्दाभये त्योघरी।
होला पुत्र असल् उनै वरुणको भारी तपस्या गरी।।

(१३)

यस्तो उत्तर पाइ निश्चय गरी गङ्गा किनारा महाँ।
गै पद्मासन बाँधि नेत्र चिम्ली राजा बसे झट् तहाँ।।
तिन्को त्यो दृढ ध्यान देखि खुशि भै साम्नै अगाड़ी भई।
साहै कोमल बोलिले वरुण आज्ञा गरे यो तहीं।।

(१४)

हेराजन्! तिमिदेखि खूशी म भएँ इच्छाभएको यहाँ।
मागील्यौ वरदान दिन्छु अहिले तिम्रा अगाड़ी महाँ।।
यस्तो बात सुनि सकी जलधिको अत्यन्त खूशी भई।
हात्जोरीकन बिन्ति यो गरिलिये साम्ने महाँ ती गई।।

(१५)

संतान्छैन मलाइ हेवरुणजी!संतान् दिनूहोस् भनी।
यस्तो विन्ती सुनिसकी वरुणले भन्दाभए फेर् पनी।।
संतान्ता तिमीलाइ छैन नृपते!साँचो बताएँ यहाँ।
छोराको मुखमात्र हेर्न दिउँला गर्नोस् प्रतिज्ञा यहाँ।।

(१६)

तेही बालक यज्ञमा बलि गरी दिन्छौ भने त्यो घरी।
होला दिन्छु कबोल यो गर तिमी हूँदैन दोस्त्रो गरी।।
आज्ञा येती सुनीसकी वरुणको राजा परे शोकमा।
चिन्ता व्याकुलभै कसोगरूँ भनी धैर्यै लिई चित्तमा।।

(१७)

राजाले मनमा विचार् गरिलिये एसै कसोरि तरूँ।
छोराको मुख देखि पितृ-ऋणता छुट्नेछ मेरो बरु।।
केही बेर यही कुरो मनमहाँ संझी हरिश्चन्द्रले।
माग्छू पुत्र भनेर निश्चय गरी गर्छू म भन्दा भये।।

(१८)

वाचा सत्य गरी लिए वर दिई अन्तर् वरुण भै गए।
राजा खूशि हुँदै तरें अब भनी घर्तर्फ फिर्दा भए।।
रानी एकशये थिए सब कहे यस्तो भयो लौ भनी।
तीमध्ये पटरानीले नृपति को झट् गर्भ बोकिन् अनी।।

(१९)

राजा खूशि भई क्रमै सित सवै कर्मादि गर्दैगए।
जोइच्छा मनमा थियो महिषिको त्यो खानलाइ दिए।।
हर्षैले दश माश पूर्ण जब भो छोरो भयो सुन्दर।
भारी उत्सव भो अनी शहरमा भो मङ्गलै मङ्गल।।

(२०)

लावा चन्दन फूल फेर् अविरको वर्षा बहुतै भयो।
वेद्पाठ् नाच र गान सब् सहरमा एक्एक घर्मा थियो।।
राजाले पनि पुत्रदेखि मनमा अत्यन्त खूशी भये।
गाईदान असंख्य द्रव्य द्विजमा दु:खीहरूमा दिये।।

(२१)

थिये उत्सव धेर् तहाँ वरुणजी सामान्य जस्ता बनी।
आये ती द्विज-रुपले नृपकहाँ के भन्छ यस्ले भनी।।
राजन्! पुत्र भयो भनी खबर यो सूनेर आएँ यहाँ।
संझी सत्यकवोल यज्ञ गरलौ छाडी अरू काम् यहाँ।।

(२२)

आज्ञा सुनी वरुणको नृप हड्बड़ाई।
बिन्ती गरे अघिसरी अधिकै डराई।।
हे नाथ ! गर्दछु म यज्ञ तथापि रानी।
सुत्केरिछन् म पनि छू अपवित्र जानी।।

(२३)

पर्खी दिनोस् अवधि दीकन एक मास।
गर्छू अवश्य अनि यज्ञ म हर्ष साथ।।
बिन्ती सबै ति नृपको सुनि फेरि ताहाँ।
भन्दा भए वरुण बात ति भूप माहाँ।।

(२४)

जान्छू म लौ नरपते ! अब एक मास।
दिन्छू मियाद न गरे पछि सत्यनाश।।
येती भनी जलधि घर्‌तिर फर्कि आये।
राजा खुशी भइ नुवारन गर्न लाये।।

(२५)

हेरेर ज्योतिषजिले शुभ-लग्न थापे।
त्यो राज पुत्र कन रोहित नाम राखे।।
हर्षै थियो नृपमहाँ सुत लाइ पाई।।
त्यो मास ता बिति गयो खबरै न पाई।।

(२६)

आये पछि वरूणजी द्विज-रुप धारी।
पूजा गरे नृपतिले गरि भक्ति भारी।।
बिन्ती गरे वरुणका सँग दाँत आव्स्।
यो पुत्र यज्ञ पशु लायक होइ जावस्।।

(२७)

दाँतै न उम्रि दिनु छैन बली भनेर।
देखिन्छ शास्त्रहरुमा इ कुरा सुनेर।।
बिन्तीगरे फिरि अलीदिन पर्खी दीनोस्।
गर्न्यैछु यज्ञ शिशुको सब दाँत उम्रोस्।।

(२८)

लौं लौं भनी वरुणजी अनि फर्कि आये।
यस्तै प्रकार्सित पाँच पटक् अड्याये॥
आखीर रोहितजिको व्रतबन्ध आयो।
सूनेर बात् वरुणको मन हबडायो॥

(२९)

भागी तहाँ वनमहाँ नृप-पुत्र धाए।
खोजेर लेउ भनि दूतहरु धेर् पठाए॥
ये बीचमा वरुणजी फिरि सामु आये।
साह्रै डराइ नृपले सब हाल् बताये॥

(३०)

अत्यन्त क्रोधित भयेर वरुण्जी ताहाँ।
दीये शराप नृपमा उहि बीच माहाँ॥
राजन् ! जलोदर भई अति दुःख पाए।
यो श्राप दिई वरुण फर्कि दुरुन्त आए॥

(३१)

लाग्यो दारुण शाप तत्क्षणमहाँ ग्रस्तै गऱ्यो रोगले।
वैलाये नृप तेस माथि मनमा झन् पुत्रको शोकले।
छोराले इ कुरा सुनेर वनमा जान्छू घरैमा भनी।
लागे इन्द्र अगाडि गैकन अनि रोके नजाउ भनी॥

(३२)

आत्मा हो सब प्राणधारिजतिको छोरो भनेको जती।
हे बाबू ! अहिले गयौ यदि भने हूनेछ तिम्रो खर्ती।।
मर्छौ निश्चय यज्ञमा पशु सरी तस्मात् नजाऊ वहाँ।
भन्दा चित्त बुझ्यो बसे वनमहाँ वर्ष बित्यो एक् तहाँ।।

(३३)

रोग ग्रस्त भई पिता अति दुखी छन् रे भनेको सुनी।
लागे जान र इन्द्र गैकन फिरी रोके न जाऊ भनी।।
राजा आकुल भै वशिष्ठगुरुमा सोधे गरूँ के भनी।
यौटा केहि उपाय शोचि मनमा भन्दा भए ती मुनि।।

(३४)

छोरो ब्राह्मणको किनेर महाराज् त्यो यज्ञ गर्नू पर्‍यो।
छोरैहुन्छ किने पछी सुन नृपे ! शास्त्रोक्तकै बातहो।।
यस्ता बात सुनी वषिष्ठऋषिको गर्छू म त्यै काम्भनी।
तेस्तै ब्राह्मण पुत्र खोज्न भनी दूत् धेर् पठाये पनी।।

(३५)

दुःखी ब्राह्मण कोहि एक घरमा थीए दरिद्री अती।
थीए बालक तीन पुत्र* उनका आफू दुई दम्पती।।
सल्लाहा गरि ज्येष्ठ बाबुतिर भो कान्छो उ आमातिर।
बेचीनेतिर माहिलो हुन गयो बेची दिए आखिर।।

---

(१) अजीगर्त (२) शुनःशेफ (३) शुनःलांगूल ।

(३६)

ल्याए ब्राह्मण-पुत्र कीनि घरमा मंत्रीहरूले जसै।
राजाले पनि गर्छु यज्ञ भनि सब् ठीक्ठाक्गराए तसै।।
बाँधे ब्राह्मण-पुत्र वेदविधिले त्यो यज्ञ खम्बा महाँ।
लागे थर्थर काम्न बालक भने अत्यन्त डर्ले तहाँ।।

(३७)

थाले ब्राह्मण-पुत्र रून भयले थीए तहाँ जो सुनी।
लागे रून सबै दया हुन गई हा कष्ट के यो भनी।।
बेला त्यो बलि दीनलाई जब भो ताहाँ कसैले पनी।
आँटगर्न सकेन के गरि गरोस् त्यो ब्रह्मघाती बनी।।

(३८)

राजा आकुलमा परे अब कसो गर्नू मईले भनी।
दीएनन् यसमा जवाब नृपका साम्ने कसैले पनी।।
हात् जोडेर अघी सरेर झटपट् बाबू शुनःशेफको।
लाग्यो भन्न म गर्दछु नरपते!धन्धा न होस् येसको।।

(३९)

फेरि उत्ति मलाइ द्रव्य दिनुहोस् यो पुत्र गर्छू बध।
यस्तो बोलि सुनेर त्यो निठुरको यो भन्न लागे सब।।
हे चाण्डाल!अधर्मि निष्ठुर!पशू खुद् आफनै पुत्रको।
बेचिस् लोभि भएर फेरि नपुगी वध्गर्नेलागीस त्यो।।

(४०)

हा हा! कष्ट वियोग हेरनु यहाँ के दुःख यस्तो भनी।
कोलाहल् त गरे तहाँ सकलले साह्रै दयालू बनी।।
विश्वामित्र अघी सरीकन तहाँ भन्दा भए हे नृप!
योदुष्कर्म अयोग्य छोड विचरो रोयो हरे! बालक।।

(४१)

राजालाइ यती भनेर मुनिले तेस्का नजीकै गये।
येही मंत्र जपेस् भनी वरुणको एक्मंत्र शिक्षा दिये।।
तेही मंत्र जप्यो तहाँ वरूणजी आए अगाडी अनि।
राजालाइ भने खुशी छु बध यो पर्दैन गर्नू पनि।।

(४२)

छोडी देउ हुनेछ पूर्णमख[१] यो त्योरोग जाला अबै।
आज्ञा येति सुनी सकी वरुणको खुशी भए ती सबै।।
छोडे बालकलाइ यज्ञ सकियो राजा हरिश्चन्द्रले।
खूशी भैकन प्रार्थना जलधिको गर्दा भए नम्रले।।

(४३)

लागे बालक भन्न हेरि सबमा बाँचे म मर्ने थिएँ।
हे धर्मज्ञ समाजहो! भन तिमि कस्को म छोरो भएँ।।
यस्तो प्रश्न सुनी सभासदहरू भन्छन् मुखामुख् गरी।
बेचे ब्राह्मणले त पुत्र नृपकै भन्थे तहाँ एक थरी।।

(१) यज्ञ

(४४)

भन्थे फेरि कती त यो वरुणको छोरो नियाँले भनी।
यस्तै बीचमहाँ वशिष्ठ गुरुले भन्दा भए यो अनी।।
हे सर्वज्ञ ऋषीश्वरादिहरू हो!वेदादीको सम्मती।
संझी भन्दछु येहि निश्चय गरी सुनेर लेऊ यती।।

(४५)

बेच्ने बाबु अबश्य हुन्न किन्ने राजा पनी यो घरी।
यज्ञैमा बलि दीनलाइ किन्ने बाबू भए के गरी।।
विश्वामित्र पिता भए बुझनुहोस् ज्यानै बचाई दिए।
येसैले श्रुति-धर्म शास्त्र-विधिले बाबू ऋषि नै भए।।

(४६)

यस्ता बात सुनी वशिष्ठ मुनिको होहो यही ठिक्भनी।
सोही बात गराइ पूर्ण ऋषिको सम्पूर्ण बोल्ले अनी।।
विश्वामित्रजिल्ले कुमार संग ली उठेर जाँदा भए।
निस्तालू ऋषि जो थिए अरु पनी सम्पूर्ण फर्की गए।।

(४७)

राजाको पनि रोग् छुट्यो खुशि भई आनन्दले रहे।
कूमार रोहितले सुनेर इ कुरा अत्यन्त खूशी भए।।
आए झट् घरमा ति हर्ष मनले राजा हरिश्चन्द्र फेर्।
पुत्रैका शिर सूँघि मेलन अमी गर्दा भए प्रेम धेर्।।

(४८)

तन्मन्‌ले गरि राज्य पालन गरी राजा रहन्थे तहाँ।
केहि दिन्‌पछि राजसूय गरने आरम्भ भँगो वहाँ।।
राजाका गुरु ता वशिष्ठ मुनिनै आचार्य ताहाँथिए।
वीधीपूर्वक यज्ञ पूर्ण गरि फेर् सम्पूर्ण फर्की गए।।

(४९)

दौलत् पाइ वशिष्ठजी खुशि भई जान्थे र बाटामहाँ।
विश्वामित्र मिलेर सोधनि गरे जानू भएथ्यो कहाँ।।
यो सत्कार कहाँ मिल्यो धन बहुत् कस्ले दिएको भनी।
यस्तो प्रश्न सुनी वशिष्ठमुनिले सारा बताए अनी।।

(५०)

दाता सत्य प्रतिज्ञ धार्मिक तिनै राजा हरिश्चन्द्रले।
ठूलो यज्ञ गरे खुशी अति भई पूजा गरे भक्तिले।।
बुझ्नोस् तीसरि कोहिछैन अहिले दाता दयालू पनी।
साँचो बोलनमै छ सत्य तिनको भन्नै सह्रानी सुनी।।

(५१)

विश्वामित्र महाँ पुरानु नृपको बैरत्व हूँदा वहाँ।
येसै कारणले गराउन भनी झूठो प्रतिज्ञा तहाँ।।
मन्मा सोचि उठेर जल्दि वनमा आएर ती कौशिक।
पूगी आश्रममा बसेर तिनले माया गरे निर्मित।।

(५२)

यौटी सुन्दर रुपकी उ अबला रोई रहेकी पनी।
राजा गर्न शिकार तेहि वनमा घुम्दै पुगेछन् अनी।।
सोधे सत्य दया लिएर मनमा को हौ नि हे सुन्दरि!
कस्ले दुःखदियो र यो वनमहाँ रुन्छचौ तिमी यो घरी।।

(५३)

प्रश्नै येति सुनी सकी नृपतिको नारी अगाडी सरी।
लागी भन्न सबै कुरा ऋषि यहाँ बस्छन् तपस्या गरी।।
मेरा आश्रमका नजीक तँ नबस् बिग्रन्छ मेरो तप।
भन्छन् दुःखदिई मलाइ दिनदिन् काहाँ मजाऊँ अब।।

(५४)

राजाले यति बात् सुनेर ति उपर् लागेर ठूलो दया।
दौडी आश्रममा गएर ऋषिथ्यैं यो बात भन्दाभया।।
हे ब्रह्मन्! तप छोड़िदेउ अहिले मन्मा भएको जती।
दिन्छू यो तपले सबै वरिपरी बाधा भयो धेर् अती।।

(५५)

राजा येति भनी फिरे घरमहाँ पाए निहूँ यो पनी।
ताहीं कौशिकले गरे छल फिरी अत्यन्त क्रोधी बनी।।
मायाले गरि एक् बँदेल बलियो ताहाँ बनाई अनी।
राजाको फुलवारि नाशन भनी जल्दी पठाए पनी।।

(५६)

दौड़ी बँदेल सब त्यो फल-फूल बारी।
नाश्यो सबैतिर घुमि-घुमि लात मारी।।
लागे धपाउन सबै रखबार आई।
हा हा!गरे सकल गै उ बँदेललाई।।

(५७)

झन् उफ्रि धम्किदिइ मानि ताकि धेरै।
दाह्रा निकालि थुतुन धसि बारबारै।।
देखि उपद्रव ठुलो रखवार् डराये।
दौड़ी गएर नृपमा सब हाल् बताए।।

(५८)

दूतका बात सुनेर भूप मनमा आश्चर्य मान्दा भये।
आफैंनै गई मार्छु तेस्कन भनी झट्पट् दगुर्दै गये।।
छाड़े बाण छिटो बँदेल कन ता लागेन उफ्रीगयो।
चम्केको बिजुली सरी भइ छिटो भागी विपत्ता भयो।।

(५९)

घोड़ामा चढि झट् गये पछिलिई धेरै सिपाही तहाँ।
ठूला झाडि महाँ पुगेर छलिए कोही रहेनन् वहाँ।।
बाटो बिर्सि यताउती घुम्रिरहे मीले अगाड़ि मुनी।
विश्वामित्र ऋषी भुलाउन भनी थीये डुलेका अनी।।

(६०)

मायाले गरि ताहीं आश्रम पनी चाँडै तयारी गरी।
राजालाइ बसाइ आश्रममहाँ सोधे अगाड़ी सरी।।
राजन्! ब्राह्मण हूँ मता यसघरी आफू कता हो किन।
एक्कै यो वनमा सवारि हुनु भो कोही अरू देखिन।।

(६१)

यस्तो प्रश्न सुनेर ई नृपतिले साँचै बताए तहाँ।
यस्तो भो छलिएँ मता वनमहाँ आई पुगेछू यहाँ।।
आशा पूर्ण गराउने सकलको राजा हरिश्चन्द्र हूँ।
झूटो काम कदापि गर्दिन कहीं धेरै कुरा के कहूँ।।

(६२)

दिन्छू दान तपाईंलाइ पनि लौ इच्छा के को भनी।
बोले बात सुनेर ब्राह्मण तहाँ सारै चतूरा बनी।।
हे राजन्! यिकुरा वशिष्ठ मुनिले भन्थे मलाई वंहाँ।
दाता सत्य हजूरका सरि अरू छैनन् जगत्भर् महाँ।।

(६३)

छोराको छ विवाह हे नरपते! यै यज्ञशाला महाँ।
दिनूहोस मलाई दान महराज् अच्छिन्न होला वहाँ।।
यस्ताबात सुनी नुहाइ शुचि भै भन्छन् अगाड़ी सरी।
इच्छामाफिक आज दान दिउँला भन्ने कबोलै गरी।।

(६४)

इच्छा भंग कदापि गर्दिन म लौ उस्मा पनी ब्राह्मण।
मैले आज तलक् गरीन द्विजको आशा कहीं लंघन।।
इच्छा के मनमा छ मान्न अहिले राखेर भक्ती तहाँ।
मागी लीनुहवस् म दिन्छु अहिले मागेजती सब यहाँ।।

(६५)

योा बात् सुनी कपट धेर् लिइ चित्त माहाँ।
भन्दा भए अनि कबोल गराइ ताहाँ।।
मन्मा भयो विभव पाउन राज ऐल्हे।
दीनू हवोस महराज्! सब राज्य पैल्हे।।

(६६)

यस्ता बात् सुनि क्यैविचार नगरी आफ्नू भएको तहाँ।
दीए राज्य समेत दान द्विजमा खुशी भई मन्महाँ।।
बोले ब्राह्मण भूयसी पनि दिनोस् जो दानका अन्तमा।
दीनू पर्दछ पूर्ण दान फलको निम्ती छ त्यो दक्षिणा।।

(६७)

कीता निष्फल दानको गर तिमी की भूयसी त्यो गर।
भन्दा दिन्छु भनी कबोल गरि ती फर्केर आये घर।।
रानी लाइ कहे भए जति कुरा यस्तो गरें लौ भनी।
भोल्लीपल्ट भयो विहान नहुँदै आईपुगे ती मुनी।।

(६८)

लौं राज्य मेरो अब छोड़ि देऊ।
जो भूयसी बाँकि छ जल्दि देऊ।।
की ता भयो दिन्न भनी जवाफ।
देऊ तिमी लाइ म दिन्छु माफ।।

(६९)

घुर्की सुनी यो अधिकै डराई।
बिन्ती गरे यो तहिं जल्दि आई।।
झूटो प्रतिज्ञा कसरी गरूँला।
झूटो हुनू चाहिं बरू मरूँला।।

(७०)

गर्नू हवस् राज्य म छोड़ि दिन्छू।
रानी र छोरो कन साथ लिन्छू।।
काशी पुरीमा गइ बस्छु ताहाँ।
केहि पछी आउनु होस वाहाँ।।

(७१)

दीनेछु त्यो भूयसी बाँकि लाई।
भाका दिनू पर्छ यहाँ मलाई।।
येती सुनी केहि दियेर भाका।
निस्केर आये सब छोड़ि राजा।।

(७२)

रानी पनी ती सुखमा रहेकी।
दुःखी सरी भै कन ती गयेकी।।
छोरो पनी आँशु खसाइ रून्छ।
हा दुःख! यस्तो अरु कौन हुन्छ।।

(७३)

रोए छाति पिटी प्रजाहरु सबै अत्यन्त दुखी भई।
यस्ता धार्मिकले पनी त अहिले ई दुःख पाए गई।।
काशीमा पुगि ती नुहाइ पहिले तेही पुरीमा रहे।
मैले अब् कसरी तिरूँ ऋण भनी कोशीस गर्दै थिए।।

(७४)

विश्वामित्र ऋषि उसै बखतमा आए अगाडी अनी।
देऊ भूयसीदक्षिणा अब तिमी भाका पुग्यो लौ भनी।।
भन्दा गैकन हात जोरि विनती गर्छन् डराई अती।
भाकाको दिननै पनी ऋषिपते! बाँकी छ आधा जती।।

(७५)

यै आधा दिनलाइ फुर्सत दिनोस् राखी ममाथी दया।
भन्दा हुन्छ त फेरि आउँछु भनी फर्केर जाँदा भया।।
विश्वामित्र तहाँ यती भनि गए राजा परे दुःखमा।
लागे गर्न विचार पर्छु अबता तिन्का कडा झोकमा।।

(७६)

एक्ता ब्राह्मणको ऋणी भइ मरे होला गती के अनी।
बेचिन्छू बरु नै मलाइ किन्ने होला कि कोही धनी।।
तेसै लिन्न पराइको धन म ता ल्याएर दीए पनी।
यो ब्रह्मस्व कसोगरीकन तिरूँ हा दैव! मैले भनी।।

(७७)

चिन्ताग्रस्त भई गिरे नृप जसै रानी अगाडी गई।
भन्छिन् हे महाराज! धैर्यलिनुहोस् के पुग्छ चिंतित् भई।।
झूटो भै कन धर्म छोडनु कसै हूँदैन साँचो बनी।
दीनू पर्दछ दक्षिणा अब कतै बेची मलाई पनी।।

(७८)

यति सुनि कन राजा हा! भनी छाती ठोके।
सहन नशकि रूँदै भूमिमा फेरि लोटे।।
गहभरि गरि आँसू स्वामिको दुःख देखी।
सहन न सकि रोयिन् हा! भनी छाति ठोकि।।

(७९)

लड़ि बड़ि गरि रुन्थ्ये पुत्र रोहित फेरी।
दुख पनि कति दिन्छौ हा! विधाता! निठूरी।।
नृपतिकन बुझाई भन्दछिन् फेरि रानी।
प्रियतम! अब चिन्ता लीनु हो व्यर्थ जानी।।

(८०)

उठि कन धन काहीं मिल्छ की माग्न जानोस्।
झटपट कि मलाई नै कतै बेच्न लानोस्।।
पछि त हजुरलाई पुत्र यो चाहिन्यै छ।
अब त मकन बेचे द्रव्य धेर् पाइन्यै छ।।

(८१)

राजा यति सुनि सकी कन धैर्य धारी।
भन्दा भए सब कुरा मनमा विचारी।।
हे प्यारि! क्षत्रिय भई कन दान दीनू।
यै धर्म हो कसरि गैकन मागि लीनू।।

(८२)

दीनू सिवाय लिनु होइन धर्म हाम्रो।
यो सत्यनाश हुन जान्छ पछी न राम्रो।।
थस्तो मलाइ तिमिले न सिकाउ रानी।
यो काम गर्दिन कसै म अयोग्य ठानी।।

(८३)

मर्नू निको अरु हुँदैन लिनू यसोरी।
बेचूँ लगेर तिमिलाइ अहो! कसोरी।।
बेचिन्छु मै बरू प्रिये! तिमि पुत्र लाई।
पालन् गरेर बस दुःख परोस् मलाई।।

(८४)

❋ विलाप ❋

अहो! दीन कस्तो फिऱ्यो लौ मलाई।
कसोरी लिनू बेचि मोल् प्यारी लाई।।
मरेकै सरि जन्म भो आज मेरो।
विपत् रानिको आज भो झन् नराम्रो।।

(८५)

छुरी लीइ धस्नू बरू छाति माहाँ।
असल् हो भनि ठान्दछु आज याहाँ।।
कसोरी यि प्राणप्यारिको कष्ट हेर्नू।
अहो! दैव अैल्हे गरिस् लौ नगर्नु।

(८६)

यती कष्ट भोग्नू पऱ्यो सत्य थाम्दा।
अरू दुःख के हुन्छ यो देखि बढ्ता।।
भयो आज यस्तो दशा यी प्रियाको।
थियो सार जुन् माथि तेहि छुटि गो।।

(८७)

यस्तो विलाप गरि गरी अति छाति ठोकी।
रूँदा भए धुरू धुरू दुइ हात टेकी।।
छैनन् अधम् म सरिका अरू हे पियारी!
गर्नू असत् चाहिं म छू मरनै तयारी।।

(८८)

भोग्नू पर्‍यो अधिक दुःख यहाँ मलाई।
गर्दा झुटा उहि हुनेछ पछी कमाई।।
यस् निम्ति डर्दछु प्रिये! म अधर्म देखी।
भोग्दैछु पूर्वकि कमाइ कती न राखी।।

(८९)

यस्तै बात हुँदै थिए ऋषि पनी आए अगाड़ी तहाँ।
भन्छन् भूप! मियाद् दिएर अबता जान्थें म तेसै कहाँ।।
चौथाई दिन बाँकिमा त नदिए श्रापै म दीन्छू यहाँ।
येति हप्कि सुनाइ कौशिक फिरी फर्की गये फेर् वहाँ।।

(९०)

रानीले पनि दिक्कमानि अधिकै भन्दी भइन् यो अनी।
हेनाथ! छैन मियाद श्राप ऋषिले दिन्छन् अवश्यैपनी।।
छोरो पाइ सकेकि छू म नभई हुँदैन खाँचो रती।
ऐह्लै बेचि मलाइ धन् दिनु हवस् छाडेर चिन्ता जती।।

(९१)

हा !कष्ट राजा अति दुःख मानी।
बेच्नै भनी साथ लियेर रानी।।
वज्रै सरीको मन पारि पैले।
जाँदा भये ऊठि बड़ा बलैले।।

(९२)

क्यै दूर गै उच्च गरेर बात।
किन्छौ कुनै दासि म बेच्छु एक।।
चाण्डाल् सरीको म छु सूनि लीनोस्।
शास्त्रोक्तको मोल मलाइ दिनोस्।।

(९३)

विश्वामित्र ऋषि कुनै धनि बनी आये अगाडी वहाँ।
दासी किन्छु मलाइ देउ अहिल्यै दिन्छू रुपैञा यहाँ।।
को हौ स्त्री किन बेच्तछौ तिमि भनी येती भनेथे जसै।
राजा उत्तर क्यै न दीकन तहाँ चुप्चाप लागे तसै।।

(९४)

शास्त्रोक्तको मोल् सब ताहिं दीये।
ती रानिलाई तहिं कीनि लीए।।
ली जान लागे अति रोइ रोई।
लाग्यो पछी पुत्र पनी त ताहीं।।

(९५)

रानी अगाड़ी सरि हात जोरी।
भन्दी भइन् ती ऋषिलाइ हेरी।।
हेनाथ! यो पुत्र पनी लिनू होस्।
शास्त्रोक्तको मोल जती दिनू होस्।

(९६)

छोड्दैन केही गरि यो मलाई।
छोड्नूँ कसोरी म पनी त हाइ!।।
येती सुनी पुत्र समेत लीए।
दश्कोटि तेस्को पनि मोल दीए।।

(९७)

गहभरि गरि फेरी आँशु बर्-बर् चुहाई।
लिइ कन पछि छोरो स्वामिका सामु जाई।।
दुइ चरण समाती भन्न लागिन् ति रानी।
हजुर रहनु होला कत्ति चिन्ता न मानी।।

(९८)

विनय यहि म गर्छू जो जती धर्म-कर्म।
शक भर गरिएको आज सम्मन् सुकर्म।।
उहि सकल सखा भैं जन्म जन्मान्त लाई।
हजुरकि भइ दासी बस्न पाऊँ म जाई।।

(९९)

✱ रानीको विलाप ✱

अहहा दैव! कती नि हामि लाई।
दुख दीयौ अहिले बिछोड् गराइ।।
पतिको पाउ यसै कसोरि छोडी।
अहहा! जानु कसोरि प्रेम तोडी।।

(१००)

भई दासि कसोरि स्वामि लाई।
अब छोड़ूँ कसरी म के चिताई॥
यस जन्म महाँ हुँदैन भेट।
पछि जन्मान्तरको मिलान के छ?॥

(१०१)

तर सत्य न छोडि जान्छु ऐह्ले।
यतिमै सत्य कसोरि छोडुँ मैले॥
पतिकै छ मलाइ फिक्रि भारी।
कसरी राज हुनेछ छोडि नारी॥

(१०२)

बिकीगो पुत्र त साथ् लिएर जान्छू।
मुख हेरी यसलाई दीन काट्छू॥
अब अन्तिम यो बिदा मलाई।
दिइ बक्स्योस् अब नाथ, देर् न लाई॥

(१०३)

राजा केहि जबाफ दीन नसकि मूर्छा परेकै थिए।
लौलौ हींड, भनी लछारि धनिले लीएर जाँदा भए॥
मूर्छाबाट बिऊँझि खप्न नसकी अत्यन्त दुःखी बनी।
लागे छाति पिटेर रून बहुतै हा पुत्र रानी,भनी॥

(१०४)

❋ राजा को विलाप ❋

अहहा! प्राण पियारि मेरी रानी।
अह रोहीत ! पियार पुत्र नानी।।
तिमि दूबै नहुँदा कसोरि बाच्नू।
धिक मैले त असल् हुनेछ मर्नू।।

(१०५)

तत्र कर्म कसोरि छोडुँ जाहाँ।
ऋषिको द्रव्य दिनूछ बाकि वाहाँ।।
तिमिमा धन्य प्रिये, रहेउ आँट।
सहजै छोडि गयौ नि मेरो साथ।।

(१०६)

अब ता भेट हुनेछ फेरि काहाँ।
प्रिय, एक्कै कसरी बसौं म जाहाँ।।
न बसौं, जाउँ उठेर फेरि काहाँ।
विधि हे, गर्नू गरिस् मलाइ जाहाँ।।

(१०७)

यै बीचमा कौशिक फेरि आयी।
भन्दा भये देउ दिने मलाई।।
राजा उठी द्रव्य अगाडि राखे।
फेरी उनील्ले अरु अत्तु थापे।।

(१०८)

पायेर धन् कौशिक सामु जाई।
भन्दा भये भूपति लाइ तार्हीं।।
राजन् ! यि राजसूयकि दक्षिणा यो।
पाएँ,अरू देउ उ भूयसी पो।।

(१०९)

दीने विचार् छैन भने जवाफ।
देऊ दिनेछु तिमीलाई माफ।।
की ता शराप् दिन्छु भनेर घुर्की।
देखाइ धन् लीइ गये ति फर्की।।

(११०)

त्यो दक्षिणा द्यूँ अब लौ कसोरी।
मन्मा विचारेर कुरा यसोरी।।
युक्ती कतै केहि न देखिंदामा।
दुःखी भये भूपति धेर मन्मा।।

(१११)

लामू श्वास गरी उठे वरिपरी हेरेर भन्छन् तहाँ।
बेचिन्छू अब मै मलाइ किनने छौ कोहि आवो यहाँ।।
यो संकल्प बुझेर धर्म नृपको गर्छू परीक्षा भनी।
आये घोरस्वरूप धारण गरी चाण्डाल जस्ता बनी।।

(११२)

किन्छू लौ म तँलाइ दिन्छु रुपिञा हो मोल तेरोकती।
भन्थ्यो त्यो उहिबीचमा ऋषिपनी आए रिसाई अती।।
चाँडो देउ मलाइ दिन्न अबता भाका र खावा पनी।
यस्तो हप्कि सुनी भने नृपतिले अत्यन्त दुःखी बनी।।

(११३)

हेब्रह्मन्, अति नीच यो छ कसरी यस्को कमारो म हूँ।
राख्नूहोस् तपाइँ कै म त बरू सेवा टहल्मा रहूँ।।
आज्ञामाफिक दास भै सकल काम् गर्नेछु साम्ने रही।
भन्दामा ऋषिले ठुलो कपट ली भन्दा लौ तहीं।।

(११४)

आफ्नू दास गरीसकेर अनि त्यो चाण्डाललाई तहाँ।
भन्छन् यो लिइजा मलाइ रुपियाँ चाहिन्छ लौ दे यहाँ।।
सूनी रत्न, सुवर्ण चाँदिहरुको थुप्रो लगाई दियो।
कौशिक्लाइ खुशी गरी श्वपचले राजा कमारो लियो।।

(११५)

जस्सै धन् ऋषिले लिए नृपतिका शिर्मा तहीं पुष्पको।
वर्षा भो सुरलोक देखि बहुतै बाजा बज्यो धूमको।।
आकाश्वाणि पनी नृपतिले सुन्दा भए यी कुरा।
हे राजन्! अऋणी भयौ अबतिमी तिम्रोवचन् भोपुरा।।

(११६)

विश्वामित्र प्रशस्त धन् मिलि तहाँ खू भयी गैगये।
राजालाइ पनी त तेहि डुमका साथ्मा लगाई दिये।।
दूईचार लगाई बेत पहिले नेल् हत्कडी सब् धरी।
सास्ती धेर दिंदो भयो श्वपचले[१] राजा पनी त्यो वरी।।

(११७)

शोक्ले ग्रस्त भई प्रिया सुत भनी चार दीन भोकै रहे।
पाँचौं दीन बिहान भो जब तहाँ नेल्देखि खुल्दा भये।।
बोलाईकन सामु लाल नजरले यो भन्छ चांडाल् तहाँ।
काशी दक्षिणभागमा अतिठुलो जान्नू मशान् एक्वहाँ।।

(११८)

ताहीं गैकन हुन्छ जौन रितले मीलोस् तहीं कर् लिनु।
यो लाठी विरवाहुको भनि तहाँ सब्मा सुनाई दिनु।।
आज्ञापाइ ति भूपती पनि गये कस्तो मशान् त्यो भने।
देख्दैमा पनि प्राणि मात्र सबमा विह्वल् गराई दिने।।

(११९)

स्यालकुत्ता अनि गिद्धलेसहित भै जुन्मूर्तिमा वास्लिने।
आधा अङ्ग जल्नेर खालि भुमिमा मुर्दा कहीं देखिने।।
जल्दैछन्कतिजल्नलाइठिकछन्स्याल्गिद्ध खान्छन्कती।
कोहीमर्न तयार छन्जलमहाँ रुन्छन् कती ता बसी।।

---

१ चाण्डाल—मशान र मुर्दा को दस्तूर लिने र वापती मानिस काट्ने ।

(१२०)

यस्तो अद्भुत त्यो मशान बिचमा देखेर राजा तहीं।
भन्छन् दैव! मलाइ कुन् करमले ल्याइ पुऱ्यायो यहीं।।
अग्नी धेर भइ पहाड़ सरिको अग्लो तहीं देखिने।
बोसो मस्किपरेर तेहि बिचमा चट्चट् अवाज् आउने।।

(१२१)

यस्ता भूमिमहाँ बसी करलिई जम्बागरि जोड्दछन्।
यो मेरो यति भूपको यति श्वपच्कोहो भनी राख्तछन्।।
राजाको पनि भेष् श्वपच् सरि भई सोभाव मिल्दैगयो।
यस्ता धर्मि भयेर ती नृपतिको भारी दशा भै गयो।।

(१२२)

रात्रीमा निदछैन कत्ति नृपमा भोक् दीनमा एक् रती।
थीयो चित्त प्रिया र पुत्रतिरनै तिन्को हमेशा मती।।
थाङ्नू एक जडाउरी पनि बुचे भोटो लगाई तहाँ।
मुर्दाका कपड़ा बटोलि दिन दिन् बोकेर जान्थे वहाँ।।

(१२३)

गर्थे सोधनि के गरूँ अब भनी काँपेर तीं थर्थरी।
आज्ञा माफिक दास भै गरदथे जो आउँथ्यो काम् परी।।
यस्तै चाल्सँग एक वर्ष शतझैं मानेर काटी लिए।
रानी पुत्र त दुःखसागर महाँ सौंपी दिएकै थिए।।

(१२४)

मैला लुगा सकल देह अतीव मैलो।
दुर्गन्धले सकल युक्त शरीर भैगो।।
दास् भै तहाँ श्वपचका सँगमा रहेका।
हा कष्ट ! भूपति अति दुखमा परेका।।

(१२५)

भन्छन् व्यासजि फेर् उतातिर पनी रानी र छोरा तहाँ।
बूढा ब्राह्मणका परेर करमा काम् काज गर्थे वहाँ।।
साथीका सँग राज-पुत्र वनमा खेल्दै गएका थिए।
देखेछन् कुश फेर् उखेल्न भनी घारी विषे ती गए।।

(१२६)

निस्क्यो एक विषालु सर्प र डस्यो रोहित् मरि गैगये।
यो सम्चार भनौं भनीकन सबै फर्की ति बालक् गये।।
सन्ध्याकाल हुँदा पुगेर सबले त्यो हाल् सुनाए जसै।
हाहा! पुत्र भनी लडी बडि गरी ती रूनलागिन् तसै।।

(१२७)

देखे ब्राह्मणले र झन्रिस गरी सोध्नूर खोज्नू कहाँ।
लागे गालि गरेर भन्न अझ यो रुन्छे कती लौ यहाँ।।
सन्ध्याकालमहाँ अलच्छिनिभई रुन्छेस् यसोरी भनी।
यस्तो हप्कि सुनी डराइ बहुतै विस्तार गर्छिन् पनी।।

(१२८)

हे नाथ्! रोहित पुत्रलाई वनमा टोकेर[१] मार्‍यो अरे।
जान्छू हेरन केहि फुर्सत दिए हाजीर हूँला भर।।
बारम्बार विलाप यो गरि गरी भन्दी भईन् तैपनी।
गर्थे गालि अतीव निष्ठुर बनी हूँदैन जानू भनी।।

(१२९)

साह्रै ढीपि गरिन् र काम घरको चाँडो सकी जा भनी।
आज्ञा पाइ गएर कम जति हो रूँदै गरिन् त्यो पनी।।
आधारातभएछ काम सक्दा निस्की गइन् रातमा।
हाहा! कष्ट! थिएन साथि अरको कोही पनी साथमा।।

(१३०)

मृतक पुत्र उ रोहित थ्यो जहाँ।
पुगि विलाप अघोर गरिन् तहाँ।।
मृतक होइन यो भनि भानले।
लिइ झुराउँदथिन् अति प्रेमले।।

(१३१)

किन मलाइ यसोगरि शोकका।
उदधि[२] बीच डुबाउँदछौ नि हा!।।
उठ साहस गरी अब बोल बा।
तिमि बिना म कसो गरि बाँचु हा!।।

---

(१) सर्पले (२) समुद्र ।

(१३२)

कति कती अरु कष्ट हुँदापनी।
बिरसियो सब दुःख तिमि भनी।।
हुन गयो तिमिमा पनि यो गती।
शिव! हरे! परनू कति आपती।।

(१३३)

सकल लक्षण युक्त छ यो भनी।
भनदथे अघि ज्योतिषिले पनी।।
उ पनि व्यर्थ भएर गयो कता।
खपि न शक्नु भयो प्रिय-पुत्र हा!।।

(१३४)

विधि [illegible] किन हो अति निर्दयी।
कति सजाय दिनू निठुरी भई।।
अझ उता पति क्को गति के भयो।
म नहुँदा कसरी रहनू भयो।।

(१३५)

उठन बाबु मलाइ मुमा, भनी।
हृदय शान्त गराउ उठी तिमी।।
कसरि बाँचु म बाबु, तिमी बिनू।
निठुर दैव, तँलाइ कसो भनूँ।।

(१३६)

कस्तो नसिब् दुःखि रहेछ मेरो।
छोडी गयौ बाबु नि, सङ्ग मेरो।।
भोगें यती दुःख तिमि पुत्र भन्दा।
मिथ्या भयो त्यो पनि छोडि जाँदा।।

(१३७)

बाँच्ने मलाई अब सार छैन।
हुनू जती भो अब बाँकि छैन।।
हा हा! विधाता, तिमिलाइ मैले।
क्यै काम् न गर्नू त गरीन कैल्ये।।

(१३८)

आजै तलक् मेरि यि झूटि नाता।
थिए छुटी सर्व भए विनाता।।
विष् पान् गरी मर्दछु आज याहाँ।
मर्छू बची सार् अब छैन याहाँ।।

(१३९)

यस्तै विलाप् धेर गरेर रानी।
भन्छिन् तहीं ऊठन बाबु! नानी!।।
क्यै होस् नपाई अति शोक गर्थिन्।
ऊठाइ धेर् चुम्बन मात्र गर्थिन्।।

(१४०)

त्योबिच् रात्रिमहाँ विलाप्अति गरी रुन्थिन् यसोरी तिनी।
चाल्पाएर सबै उठीकन गए को रुन्छ हेरौं भनी।।
जम्बू स्याल कराउँथे वरिपरी डर् क्यै न मानी तहाँ।
नारी एकलि रातका बिच बसी रोई रहेकी वहाँ।।

(१४१)

देखे ती सबले र शोधनि गरे आश्चर्य भै यो घरी।
कोह्वौ के हुनगो र यस् तरहले रुन्छचौ विपद् के परी।।
धेरै पल्ट यसोरि सोधनि गरे को ह्वौ बताऊ भनी।।
रोइन् उत्तर केहि दीन नशकी अत्यन्त दुःखी बनी।।

(१४२)

शङ्का आपसमा गरे सकलले यो डंकिनी हो यहाँ।
बस्थी यो किन नत्र निर्भय भई यो मध्य-रात्री महाँ।।
योहो बालक घातिनी अब यहाँ हूँदैन राख्नू भनी।
पक्री केश लछारदै नगरका बाहिर् पुऱ्याए अनी।।

(१४३)

हाहा! कष्ट! हरे! उही श्वपचका सामू पुऱ्याई दिए।
मार्नू पर्दछ डंकिनी अब भनी सल्लाह गर्दा भए।।
हे चाण्डाल! रहीछ यो शहरका बालक्विनाशी भनी।
पक्रयौं बालकघातिनी अधम यो हो मार्न योग्यै पनी।।

(१४४)

यस्ता बात सुन्यो र त्यो श्वपचले यस्लाइ लौ काट्भनी।।
दीयो खड्ग तथापि आँट्ननसकीभन्छन्तद[१] काँतर्बनी।।
हे चाण्डालपते! अह्राउ गरूँला जो काम होला अरू।
यस्तो काम कदापि गर्दिन मता यो प्राण जावस् बरु।।

(१४५)

मार्नू काम अयोग्य हो तर पनी तिम्रा हुकुम्ले गरी।
औरै कोहि भए म तत्पर भई मार्थे अगाडि सरी।।
एक्ता ज्यान लिनूछ कर्म घटिया कोही हवस् तापनि।
उस्माथी पनि स्त्री र ब्राह्मण[२] इता कस्तै हउन् तापनि।।

(१४६)

मार्नू छैन अवध्य छन् बुझ तिमी हुँदैन यो सर्वथा।
जावस् ज्यान बरू म दिन्छु बदला गर्दीन योकाम् मता।।
यस्ता बात सुनीसकी स्वपच त्यो केही रिसाईकन।
लाग्यो भन्न तँलाइ यो सब कुरा वाम्ता छ के दुर्जन।।

(१४७)

मेरो चाकरहोस् म भन्दछु जसो तेसो तँगर लौ यहाँ।
मान्दैनस् यदि पीटनेछु छाडिले बाँधेर खम्बा महाँ।।
नारी ब्राह्मण मार्नुछैन छनता हो जान्दछु मै पनी।
दुस्कर्मी छ भने उ मारन महाँ लाग्दैन दोष क्यै पनी।।

(१) राजा (२) स्त्री र ब्राह्मण मार्न धर्मशास्त्रहरूले निषेध गरेका छ ।

(१४८)

यो हो बालकघातिनी मुलुककी यस्लाई मार्दा महाँ।
रक्षा हुन्छ ठुलो मुलूक भरिको क्यै छैन शङ्का यहाँ।।
मेरो नोकर भै बडो विदुर झैं गर्छस् कुरा ज्ञानका।
जो भन्छू उहि गर्नुपो परदथ्यो कस्तो घमण्डी तँता।।

(१४९)

ला यो खड्ग न मारि हुन्न अब काट् येती भनेथ्यो जसै।
हाहा!! कष्ट! भनेर खड्ग करमा लीये करैले तसै।।
रानी हुन् भनि होश छैन मनमा तेस्तै ति रानी पनी।
राजाहुन् इ भनेर कत्ति नचिनी क्यै भन्नलागिन् तिनी।।

(१५०)

मेरो पुत्र मरी रहेछ उ यहाँ लीएर आऊँ अनी।
काटौला तिमिले मलाई भनि ती फर्केर आइन् पनी।।
थीयो प्राणवियोग पुत्र उ जहाँ दौडैर ताहाँ पुगिन्।
रूँदै लाश उठाइ रात्रि बिचमा फेरी मशान्मै गइन्।।

(१५१)

ताहाँ सम्म थिएन ज्ञान दुइमा राजा र रानी भनी।
हाहा! पुत्र! भनेर छाति पिटदै खुब् रूनलागिन् अनी।।
अर्काकी करिया भएँ तर पनी मानीन गाह्रो रती।
ए बाबू, मन यो बुझाउँ कसरी तिम्रो हुँदा दुर्गती।।

(१५२)

राजाको पनि के छ हाल हविगत् देख्नू न सुन्नू भयो।
कस्तो पाप अघी गरीछु र यहाँ यो दुःख आई पर्‍यो।।
हाहा! प्राणपियार! हा! यति भनी लोटन् भुमीमा जसै।
रानी पुत्र भनी चिन्ही नृप पनी मुर्छा परे ती तसै।।

(१५३)

केही बेर् पछि होस भैकन उठे राजा र रानी पनी।
लागे गर्न विलाप बसेर ति दुवै हा! पुत्र, रोहित् भनी।।
राजाको गति यों बुझेर मनमा झन् दुःख लागीकन।
धिक्कार् दैव! भनेर छाति पिटदै लागिन् बराबर् रुन।।

(१५४)

राजाले पनि आफनू सब कुरा यस्तो भएको भनी।
रानीलाई कहे बिलाप गरदै अत्यन्त दुःखी बनी।।
रानीले पनि पुत्रका मरणको विस्तार सारा कहिन्।
रूँदै छाति पिटी ठहर्न नसकी फेरी ति मूर्छा भइन्।।

(१५५)

मूर्छा देखि उठेर सुस्त स्वरले खैंचेर मन् त्यो घरी।
खोली नेत्र गरेर साहस ठुलो भन्छिन् अगाडि सरी।।
हेनाथ्! सत्य र धर्म पालनपछी लाग्दा यती भैग्यो।
छोड्नूछैन तथापि सत्य छ ठुलो पर्ने जती भैगयो।।

(१५६)

चल्नू पर्दछ स्वामिका खटनमा यै धर्म थाम्ने भया।
काटी दीनु हवस् मलाइ अहिले कत्ती नराखी दया।।
रानीका यति बात वज्र सरिका सूनी लिएथे जसै।
ठूलो चोट पऱ्यो र वज्र सरिको लोटे जिमिन्मा तसै।।

(१५७)

केही बेर पछी उठी गह्र भरी आँशू गराई तहाँ।
भन्छन् मर्छु चिताम्हहाँ सुति सँगै यो देह पोली यहाँ।।
जाऊ मालिकको टहल् गरिरहू आज्ञा न चूकी रती।
साँचो धर्म छ ता कुनै जनममा योग होला पछी।।

(१५८)

हा पुत्र! प्राण प्रिय हा! तिमिलाइ यस्तो।
देख्नू पऱ्यो नि अहिले गति बाबु! त्यस्तो।।
हा प्राण प्यारि! तिमरो पनि दुर्दशा यो।
देखेर चित्त अझ फेरि विकल् भई गो।।

(१५९)

बाँच्नू अवश्य पनि छैन निको मलाई।
भो जिन्दगी पनि त आखिर आज आही।।
छोडेर साहस शरीर अब काँप्न थाल्यो।
आँखा पनी तिरिमिरी भई घुम्न लाग्यो।।

(१६०)

लाग्दैन क्यै भर पनी अब दैव? तेरो।
गर्नू जती गरि लिइस् बरबाद मेरो।।
रानी सुन्यौ, अबत अन्तिम भेट आहीं।
हाम्रो अवश्य पनि भेट हुँदैन काहीं।।

(१६१)

येती भनी धुरु धुरू अति रोइ ताहाँ।
मूर्छा परे पृथिवीमा गिरि भूप वाहाँ।।
देखेर रानि भइ विह्वल धेर मन्मा।
पाऊ समाति कन भन्छिन भूपतीमा।।

(१६२)

नाथ्को सवारि भइगो यहिं बस्न लाई।
दींदैन शास्त्र पनि सम्मति नारि लाई।।
तस्मात् सती भइ शरीर जलाइ दिन्छु।
दासी म ता हजुरकी सँग जाइ जान्छु।।

(१६३)

सम्झेर फाटि हृदयै पनि चूर्ण भैगो।
जो सारको चिज थियो उ पनी गईगो।।
बिर्सूं कसोगरि म प्राण समान पुत्र।
साम्नू अगाडि अब ता यहि देख्छ नेत्र।।

(१६४)

देख्छू दशा हजुरको पनि यो विचित्र।
भैगो सबै हृदय यो पनि छिद्र छिद्र।।
हेरौं दशा कसरि निष्ठुर दैव, ऐले।
यै निम्ति बाँचनु असल् अब छैन मैले।।

(१६५)

यस्तो विलाप् गरि दुवै जन मर्न लाई।
पक्का गरी कन तयार चिता गराई।।
हे पृथ्वि! अन्तिम बिदा तिमि आज देऊ।
जो जो कसूर हुनगये सब माफ देऊ।।

(१६६)

यति भनेर रुँदै ति दुवै तहाँ।
मृतक पुत्र सुताइ चिता महाँ।।
सँग जलौं अब हामि भनी कन।
जलन निश्चय सूर गरी कन।।

(१६७)

जननि! हे जगदम्ब! शिवे!भनी।
भगवती कन संझि लिये अनी।।
जब यसो गरि ध्यान गरी लिए।
सकल देव अगाडि खडा भए।।

(१६८)

जलन भनि तयार् ती दंपती दूइ लाई।
पख! पख! भनि रोके इन्द्रजी सामु आई।।
अमृत छिटि जियाये त्यो मृतक् पुत्रलाई।
अति खुशि भइ लीए पुत्रलाइ उठाई।।

(१६९)

लागे गर्न पियार पुत्रकन ती राजा र रानी तहाँ।
दूवै दिव्य शरीरका पनि भए श्रीइन्द्र भन्छन् वहाँ।।
हेराजन्! तिमिलाई लीन अहिले सम्पूर्ण आज्ञौं अब।
जाऊँ स्वर्ग विमानमा चढ तिमी छोडेर झंझट् सब।।

(१७०)

आज्ञा येति सुनी सकीकन तहाँ राजा अगाडी सरी।
भन्छन् दास म छू यही श्वपचको जाऊँ कसो के गरी।।
फेरी धर्म अघी सरी कन भने चाण्डाल जो हो म हूँ।
तिम्रो सत्य बुझेर खुब् खुशि भएँ धेरै कुरा के कहूँ।।

(१७१)

तेही सत्य सहायले अब तिमी श्रीइन्द्रलोक्मा गई।
सारा सौख्य पदार्थ भोग गरिल्यौ द्यौता सरीको भई।।
राजाले इ कुरा सुनीकन तहाँ यो बात भन्दा भए।
मेरा भक्त प्रजाहरू कति रुनन् मै मात्र एक्लै गए।।

(१७२)

लाग्ला पाप मलाई हे सुरपते! तस्मात् भएको जती।
मेरो पुण्य दिएर बन्दछे भने दिन्छू खुशीले अती।।
एक्छिन्मात्र म पुण्य भोग गरुँला यो होइ सक्ने भए।
यस्तो सत्य बुझेर इन्द्र खुशिभै लौ हुन्छ भन्दा भए।।

(१७३)

विश्वामित्र अघीसरी कन तहाँ भन्दा भए यो पनी।
हेराजन्! तिमि ईख कत्ति नलिए यस्तो गरायो भनी।।
तिम्रो सत्य बुझौं भनेर यति काम् मैले गरेको यहाँ।
कत्ती फिक्रि नली सजीव खुशिले जाऊ तिमी स्वर्गमा।।

(१७४)

तिम्रा कोशलवासि भक्त जति छन् डाकी म दिन्छू भनी।
डाकी ल्याइदिए तुरून्त ऋषिले आए प्रजागण् पनी।।
जो जो वृद्ध र भक्त ध्यानि तपसी यस्ता विरागी थिए।
ती ती मात्र प्रतापि भूप सँगमा स्वर्लोक जाँदा भए।।

(१७५)

राज्पुत्र रोहितकनै दिइ राज भारी।
रानी प्रजा लिइ भयो नृपको सवारी।।
भो पुष्प-वृष्टि बहुतै सब देवताले।
जै जै शबद् गरदथे नभमा खुशीले।।

(१७६)

ठूला ठुला ऋषिहरू पनि धन्य भन्छन्।
यस् लोकमा पनि सबै सुनि खूशि हुन्छन्।।
रोहित् पनी रयिति राजि खुशी गराई।
राज्काज् गरे सकल भूपति वश् तुल्याई।।

(१७७)

धन्यै हरिश्चन्द्र समान आहाँ।
राजा हुनै धाम कठिन् छ वाहाँ।।
किर्ती जगत्मा फइली रहेको।
तिन् लोकमा गुण् पनि गाइएको।।

(१७८)

संकष्ट सारा तहिं भोगि लीए।
सारा धरम् सत्य बचाइ दीए।।
इन्का सरी धर्मि थिएन पैल्हे।
होलान् पछी क्वै न छ कोहि ऐल्हे।।

(१७९)

जो यो हरिश्चन्द्र जि को चरित।
सब्ले गरुन पाठ् अति भक्ति सीत।।
सम्पूर्ण आपत् तहिं नाश हुन्छ।
मर्दा महाँ मुक्ति समेत दिन्छ।।

।। इति श्री सत्य हरिश्चन्द्र कथा ।।

---

मुद्रक-मित्तल आफसेट, वाराणसी • फोन: ३९३७२६